आरति

मिलीजुली गाउँ आरति हरिको २
कृष्ण कन्यैको चीर हरैयाको २
कञ्चन थलियामा कपुर र बाति २
पारि सबै ठिक भाँति भाँति
आरति गाउँ परमेश्वरको
मिलीजुलि गाउँ आरति हरिको २
(२)
स्नेहको फूलले छोपि राखि २
समको आगोले बत्ति बालि २
फूल चढाउँ पाउमा हरीको २
कृष्ण कन्यैयाको चीर हरैयाको
कृष्ण कन्यैयाको मुरली बजैयाको
मिलिजुलि गाउँ आरति हरिको
(३)
मनमा हरिको मुर्ति सजाउँ २
सबमा हरि छन् भाव जगाउँ २
हृदय चढाउँ पाउमा हरिको
कृष्ण कन्यैयाको चीर हरैयाको
कृष्ण कन्यैयाको मुरली बजैयाको
मिलिजुलि गाउँ आरति हरिको २
(४)

शिव आरति

मिलीजुली गाउँ आरति शिवको २
कैलाशबासीको पार्वति पतिको
मिलिजुली गाउँ आरति शिवको
।।१।।

मिलीजुली गाउँ आरति हरिको

कञ्चन थलियामा कपुर र बाति २

पारि सबै ठिक भाँति भाँति

फूल चढाउँ पाउमा शिवको २

नागेश्वरको रामेश्वरको

विश्वेश्वरको सर्वेश्वरको

मिलिजुली गाउँ आरति शिवको ।

(२)

मनमा प्रभूको मुर्ति सजाउँ २

सबमा शिव छन् भक्ति जगाउँ २

हृदय चढाउँ पाउमा शिवको

कैलाशबासीको पार्वति पतिको २

मिलीजुली गाउँ आरति शिवको

।।३।।

जानी नजानी पाप गरेको २

क्षमा दिनोस् शिव भूल गरेको

शरण म पर्छु पाउमा शिवको २

रागेश्वरको रामेश्वरको

केदारश्वरको विश्वेश्वरको ।।

मिलिजुली गाउँ आरति शिवको

नेपाल जननीं बन्दे

स्वर: शोभा लोहनी तिवारी तथा साथीहरु, ।रचना : खेमराज केशवशरण

(१) दिव्य धुनी विशालिक चरणां, अमर गणैन्वित सेवा ।

जनक जानकी बुद्ध विभुषित, भाग्य दर्शनां बन्दे।।

नेपाल जननीं बन्दे.....

मिलीजुली गाउँ आरति हरिको

(२) रविशशी शोभित राष्ट्रप्रदाता ।
वेद विहित हित माता - २।।
हिमगिरी मुकुट पशुपति ह्रदय ।
विश्व नमसां बन्दे,
नेपाल जननीं बन्दे

(३)विमल जलामति विपुल पदाम्बहु
सश्यशालिनी बरदा -२
प्रणत शरण्या दया अबहिल्या
अभयदायिनी बन्दे
नेपाल जननीं बन्दे....

(४)मनसा बचसा क्रियया तपसा
सेवा हि घृत दिक्षा-२
धर्मधारिका ज्ञानविहितिका
विर मातरं बन्दे .....।